





# पाँच पोखरी

## रामेछाप

### संरक्षणमा धर्म, संस्कृति र परम्पराको महत्व



## राष्ट्रिय प्रतिनिधिको सन्देश

सिमसार पारिस्थितिक प्रणालीको एक महत्वपूर्ण अंग हो । सिमसारले पानीको भण्डारण र स्वच्छीकरण गर्ने, स्थानिय वासिन्दाहरुलाई विभिन्न प्रकारका श्रोत उपलब्ध गराउने, विभिन्न दुर्लभ वन्यजन्तु एवं वनस्पतिलाई वासस्थान प्रदान गर्ने र धार्मिक, सांस्कृतिक, ऐतिहासिक तथा पर्यटकिय स्थलको रुपमा अतुलनिय भूमिका निर्वाह गरेको हुन्छ ।

नेपाल अनेकौं महत्वपूर्ण सिमसारको धनी राष्ट्र भएता पनि अझै यी सिमसारहरुको खोज र महत्वको विश्लेषण हुन बाँकी नै रहेको छ । तराईको कतिपय सिमसारको सर्वेक्षण तथा अनुसन्धान भई दस्तावेजहरु तयार भैसकेको छ, तर पहाडी क्षेत्रमा अवस्थित धेरै जसो सिमसारहरुको अवस्थाबारे हामी अनभिज्ञ छौं । यही जानकारीको कमिलाई परिपूर्ति गर्न डब्लु डब्लु एफ नेपालको स्वच्छ जल सम्पदा कार्यक्रम अग्रसर भएको छ ।

स्वच्छ जल सम्पदा कायक्रमले हाल उच्च हिमाली क्षेत्रमा रहेका सिमसारहरुको विवरण तयार गर्ने क्रम अगाडी बढाएको छ । यसै सन्दर्भमा प्रस्तुत पुस्तिकाले परम्परागत रुपले जीवन यापन गर्दै आएका आदिवासी जनजातीहरुले धार्मिक, ऐतिहासिक र सांस्कृतिक आस्था एवं विश्वासका आधारमा ती क्षेत्रका संरक्षण तथा उपयोग गरेको जिवन्त उदाहरणहरु प्रस्तुत गरेको छ ।

यो अनुसन्धान अगाडी बढाउन प्राविधिक रुपले सहयोग गरिदिनु भएकोमा राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग र आर्थिक सहयोग गरिदिनु भएकोमा डब्लु डब्लु एफ नेदरल्याण्ड्स/डब्लु डब्लु एफ ईन्टरनेशनल र डब्लु डब्लु एफ युके प्रति डब्लु डब्लु एफ नेपाल हार्दिक कृतज्ञता ज्ञापन गर्दछ ।

अन्त्यमा यस किसिमको विवरण संकलन र सो को प्रकाशनबाट अन्य क्षेत्रका सिमसारहरुको संरक्षण, सम्बर्धन र वुद्धिमत्ता उपयोग गर्न सघाउ पुऱ्याउने छ भन्ने मैले अपेक्षा गरेको छु ।

Manandhar

अनिल मानन्धर
राष्ट्रिय प्रतिनिधि
डब्लु डब्लु एफ नेपाल

नेपाल अनेक पहाड, पर्वत, उपत्यका, वेशी, खोंच, हिमश्रृंखलाले सुसज्जीत हिमाली राष्ट्र भनी विश्वमा नै प्रख्यात छ। भौगोलिक विविधताले भरिपुर्ण राष्ट्र नेपाल विश्वमा प्राकृतिक सुन्दरताको धनी देश भनी मानिएको छ। अनेक भाषा, संस्कृति, चालचलन, रितिरिवाजको मिश्रण भएको नेपाली सामाजिक संरचना विश्वमै अनुपम मानिएको छ।

नेपालको हिमाली श्रृंखलासम्म फैलिएका जिल्लाहरूमध्ये रामेछाप र दोलखा पनि पर्दछन्। विक्रम सम्बत् २०५८ सालको जनगणनानुसार रामेछाप जिल्लामा १४ वटा भिन्न भाषा बोल्ने, ९ भिन्न धर्म मान्ने र ३० प्रकारका जाती जनजातीहरू बस्ने गर्दछन्। त्यसैगरी १९ विभिन्न जाती, जनजातीहरू दोलखा जिल्लामा बसोबास गर्दछन्।

## सीमसार स्रोतहरू

उत्तर क्षेत्रमा लमतन्न परेर रहेको हिमश्रृंखलाको कोखमा रहेका अनेक हिम ताल, कुण्ड, पोखरी र झर्ना निर्मल पानीका मुहान हुन् । सीमसार स्रोतहरूको दृष्टिकोणले रामेछाप र दोलखा जिल्ला महत्वपुर्ण रहेको देखिन्छ । तामाकोशी, सुनकोशी, लिखु, खिम्ती, गर्जाङ्ग, चरणवर्ती, चरङ्गे, मिल्ती, भतौली, तिल्पुङ्ग आदि साना ठूला नदीनालाहरु हिमश्रृंखला पर्वतमालामा उत्पत्ति भई हिमाल, पहाड, पर्वत, बेसी फाँट हुँदै दक्षिणतर्फ बगेका छन् । जट्टा, पाँच वाहुला, जुम्ल्याहा, भाले, तीनलाल, यालम्छा जस्ता पोखरीहरु रामेछाप जिल्लामा पर्दछन् । छ्योरोल्पा, कालिञ्चोक, पाँचपोखरी कुण्ड, बहुला, काल वा भूत पोखरी दोलखा जिल्लामा पर्ने उच्च पर्वतीय सीमसार क्षेत्रहरू हुन् ।

जट्टा, पाँच बहुला, भाले भत्केको आदि रामेछाप जिल्लामा पर्दछ भन्ने कुरा सम्बन्धित क्षेत्रमा गई सामुहिक छलफल कार्यक्रमद्वारा समूहले तयार पारेको स्रोत नक्साद्वारा थाहा भएको हो । कालपोखरी चाँहीं श्यामा गा.वि.स. दोलखा जिल्लामा पर्दछ । यी पर्वतीय पोखरीहरू पाथीभरा, कैलाश हिमालको कोखमा परम्परादेखि ऐतिहासिक, धार्मिक र सांस्कृतिक महत्वको रूपमा रहेको भन्ने सत्य तथ्य कुराहरू उक्त सामुहिक छलफल र प्रत्यक्ष स्थलगत अध्ययनद्वारा जानकारीमा आएका हुन् ।

४,०२८ मी. मा रहेको जट्टा र ४,४४३ मी. उचाँईमा रहेका पाँच पोखरीबारे रामेछाप जिल्लाको चुचुरे गा.वि.स. वार्ड नं. १ मा शिक्षक, संघसंस्थाका पदाधिकारीहरू, धामी, झाँक्री, बुढापाका, महिला, बुद्धिजिवी, युवक र स्थानीय जनवर्गीय संगठनका पदाधिकारीहरू बीच सामुहिक छलफल हुँदा ऐतिहासिककाल देखि  यी पोखरी धार्मिक, सांस्कृतिक रूपमा विभिन्न जातजाती, भाषाभाषी, धर्मावलम्बीहरूका लागि महत्वपूर्ण रहेको कुरा प्रष्ट हुन आयो ।

छलफल कार्यक्रममा रहेका सहभागीहरूलाई जट्टा र पाँच पोखरीसंग गाँसिएका धार्मिक, सांस्कृतिक घटना, मौलिक-ऐतिहासिक भनाई, सूचना, परम्परागत मान्यता, व्यवहार, विचार, विश्वास र प्रत्यक्ष अप्रत्यक्ष जीवनमा भईआएको तथ्य जस्ता विषय माथि केन्द्रित रही छलफल गराइएको थियो । त्यसैगरी त्यस्ता विषयमा पोख्त व्यक्ति, वहाँहरुको घर, नाम, थर जस्ता कुराहरू स्रोत नक्सामा अंकित गरिदिनु अनुरोध गरिएको थियो । शान्त वातावरणमा सहभागी महानुभावहरूले हृदय खोलेर जान्नमा आएसम्म सुचना प्रदान गरिदिनु भएको थियो । सामुहिक स्रोत नक्साले जट्टा, पाँच पोखरी, त्यहाँ भएका पूजा गर्ने, नुहाउने र मान्नु पर्ने र उक्त ठाउँमा कसरी पुग्ने भन्ने संकेत पनि दिएका थिए ।



"कुनै व्यक्तिले उक्त पोखरीहरूको बिरूद्धमा अनुचित कार्य व्यवहार गऱ्यो भने समाजमा अनिकाल पर्ने, खेतीबाली नराम्रो हुने, असिनाले बाली नष्ट गर्ने, पशुपंक्षी बिरामी हुने, समयमा पानी नपर्ने, घरका परिवारजनहरू बिरामी पर्ने, गाउँघरमा मराउ पर्ने जस्ता घटनाहरू घट्ने गर्दछ । त्यसो भएमा गाउँलेहरू दुध लिएर पोखरीहरूको पुजा गर्दै क्षमादान माग्न जाने प्रचलन छ ।"




स्रोत नक्साको रेखाङ्कन चित्र

**"पाँच पोखरीको बीच भागमा दुईवटा प्राकृतिक रूपले अवस्थित ढिस्काना रहेको छ । ती ढिस्कानामा भगवान शिवले आफ्नो आसन गर्ने भएकोले महत्वपूर्ण ठाउँ हो । एक जमानामा चारैतिर पानी नपरेर खडेरी पर्नाले संसारभर पानी हाहाकार हुन जाँदा मानव जगतले भगवान शिवको आराधना गर्न थालेछन् । भगवान शिवले यस्तो बिपत्तीको घडीमा मानव जगत फसेको चाल पाउनुभएपछि पाँच पोखरी बीचमा रहेको ढिस्कानोमा आसन लिन थाल्नु भएछ । त्यो कुरा गंगामाईले थाहा पाएपछि भगवान शिवको जट्टा माथिबाट पानी बर्साउन थाल्नु भएछ रे अनि पानीको मुस्लो बिछट्टै दर्किंदैं जाँदा पाँच पोखरी पनि असाध्यै ठूलो बन्न पुगेछन् । त्यसरी परेको पानी खोला, खोल्सा आदिबाट अटि नअटि विभिन्न ठाउँ हुँदै भारतबर्ष सम्मका मानिसहरूले पानी पिउन र खेती गर्न पाएछन् । उता गंगामाईलाई भने यस्तो भान भएछ रे कि शिवलाई पाँच पोखरी भित्र नै डुवाई दिउँ र अझ मुसलधारे पानी पारी दिन थालिछन् । यस्तो गंगाको आशय बुझ्रेपछि भगवान् शिवले आफ्नो जट्टा सहित छुनेगरी मिल्काईदिनुहुँदा जट्टा पोखरीको उत्पत्ति भएको र उक्त समयदेखि आपत विपत परेको समयमा पाँच पोखरी, जट्टा पोखरीको पुकार, आराधना गर्ने चलन मानव समुदायमा बसी आएको भनाई छ । यसरी आत्मीय दिलदेखि भगवान शिवको प्रतिक रूपमा अंकित पाँच, जट्टा पोखरीको पुकार गर्दा भएको सफल उदाहरणहरू यस समुदायमा थुप्रै छन् ।"**

छलफल गोष्ठीमा पाल्नु भएका सहभागीहरूले उक्त ऐतिहासिक, धार्मिक, सांस्कृतिक महत्व बोकेका क्षेत्रहरुमा आउनका लागि श्रद्धालुहरूलाई लाग्ने समयको चित्र रेखाङ्कन गर्नु भएको थियो । उक्त सामुहिक रेखाङ्कन चित्र मार्फत विभिन्न जाती, जानजाती, आदिवासीहरूको उक्त क्षेत्रमा सामाजिक, धार्मिक, सांस्कृतिक र भाषिक घनिष्टता के कस्तो रहेछ भनेर देखाउन खोजिएको छ। त्यसैगरी एक ठाउँबाट अर्को ठाउँ पुग्नलाई लाग्ने समयले उनीहरूको निकटताको अनुभूति जनाउँदछ। धार्मिक, सांस्कृतिक रूपले २१% बाहुन, २०% क्षेत्री, १७% शेर्पा, १७% तामाङ्ग, १0% नेवार, ९% गुरूङ्ग र ७% दलित घनिष्ट रुपले बसेको देखिन्छ। जनैपूर्णिमा नै मूख्य धार्मिक र साँस्कृतिक पर्वको रुपमा महत्वपूर्ण मानिएको रहेछ।

समुदायका सबै श्रद्धालु भक्तजनहरू आ-आफ्नो इच्छा, गक्ष, परम्परा, रितिरिवाज, चालचलन अनुसार उक्त जट्टा र पाँच पोखरीको दर्शन, पूजाआजा गर्न जाने परम्परा रहेछ। दर्शनार्थीहरु देशका विभिन्न ठाउँबाट हिँडेर ५ दिन देखि हप्ता दिन सम्म लगाएर त्यस ठाउँमा आउने गर्दा रहेछन्। काठमाडौं लगायत भारतका विभिन्न ठाउँबाट पनि भक्तजनहरू आउने गरेको कुरा सहभागीहरूले बताए। प्रायःजसो जट्टा र पाँच पोखरीमा पूजाआजा गर्न जाने धामी झाँक्रीहरू आ-आफ्नो धार्मिक मुन्धुम परम्परा, रितिरिवाज, साँस्कृतिक, भाषिक नाच गान फलाक्दै जानु हुने

**"अविश्वासका साथ जो कोहीले पोखरीमा ढुङ्गा हान्ने, वरिपरी दिशा, पिसाब गर्ने गरेमा असत्त रूपले बिरामी हुने या मर्न पनि सक्ने घटनाक्रम हुने गरेको छ, त्यसै कारणले त्यस्तो दुर्जन कार्य वरिपरीको समुदायबाट कहिल्यै हुँदैन ।"**



प्रचलन रहेछ । त्यसरी उक्त क्षेत्रमा जाँदा त्रिशुल र धोगा मकै, फूल, भेटी, काँक्रा, फर्सी जस्ता जैविक स्रोतहरू लिएर जट्टा, पाँच पोखरी चढाउन लाने धार्मिक, साँस्कृतिक परम्परा रहेको कुरा पनि सहभागीहरूले बताउनु भयो । शेर्पाहरूले चौंरीको दुध र अन्य ब्राह्मण, क्षेत्रीहरूले गाईको दुध चढाउँदा रहेछन् । उक्त पवित्र हिमाली पोखरीमा ती बस्तुहरु चढाई शुद्ध मनले आफ्नो शिरमा पोखरीको पानी राखेमा मनोकांक्षा पुरा हुन्छ भन्ने विश्वास लिई फर्कने साँस्कृतिक परम्परा रहेछ ।

**"जट्टा पोखरीले भक्तजन वा दुध चढाउन आउने महानुभावहरूलाई समय समयमा अनौठा स्वभावले दर्शन दिने गरेको सत्य घटनाहरू छ । जस्तै, कुनै समयमा पोखरी भरी दुध हुने, कहिले सर्पहरू खेलीरहेको, कहिलेकाँही बत्ती बल्ने र कहिलेकाँही भान्सामा प्रयोग हुने भाँडावर्तनहरू देखाउने ।"**

## अन्य धार्मिक र साँस्कृतिक विश्वासहरू

जट्टा र पाँच पोखरी वरिपरी भगवान् शिव विराजमान हुनुहुन्छ भन्ने जनविश्वास रहेको कुरा सामुहिक गोष्ठीमा व्यक्त गरियो । साधारणतया मानिसहरूले उक्त हिमाली पोखरीहरूसँग रोगकष्टहरू जस्तै दुर्बलता, बोली नआउने, कान नसुन्ने इत्यादी बाट मुक्ति पाइयोस्, परिक्षामा पास भईयोस, गाईबस्तु, अन्नपात राम्रो होस, धन सम्पत्तिको दुःख नहोस भनि इच्छा प्रकट गर्ने प्रचलन रहेछ । परिवारमा छोरा वा छोरी नभएका दम्पत्तिहरूले नानी सुताउने बाँसको कोको बुनेर एउटा ढुङ्गा त्यसमा सुताइ सन्तान पाउने चाहना व्यक्त र सन्तान प्राप्ति पछि फेरी जट्टा र पाँच पोखरीमा आफ्नो सन्तानलाई ईश्वरको बरदान भनी देखाउन बहुमूल्य जडेको त्रिशुल, बिभिन्न जैविक उत्पादनहरु लिएर पूजाअर्चना गर्ने र आयु वरदान माग्ने धार्मिक परम्परा रहेछ । पाकेको कुनै बस्तुहरु चढाउने चलन पनि रहेछ । पशुपंक्षीहरूको काटमार गर्ने चलन भने नभएको कुरा उक्त समुहगत छलफलमा राखियो ।

**"हामीले जट्टा पोखरीमा राम्रो भाँडा वर्तनहरु, हाँसहरू, डाँफे, चुला, भेंडा आदि देखेका छौं । चराहरू जट्टा पोखरी माथि भएर उडेमा पोखरीमा नै झर्ने गरेको छ । जट्टा पोखरीमा साक्षात ईश्वर हुनुहुन्छ भन्ने हामीलाई विश्वास छ ।"**

समुदायका मानिसहरू पोखरीमा पानी घटेको छ वा जस्ताको त्यस्तै छ अथवा बढेको छ कि भनी चासो राख्दा रहेछन् । पोखरीमा पानी घटेको भए उक्त सालमा अन्न बाली राम्रो नहुने, उब्जनी नहुने र समाजमा अनिकाल पर्ने विश्वास गर्ने चलन रहेछ । पोखरी रिसायो कि, चित्त पो दुखायो कि वा कसैले फोहर, नराम्रो पो गऱ्यो कि भनेर पोखरीलाई दुध चढाउदै दुःखी मन नगर्नुहोस भन्ने धार्मिक सहिष्णुता रहेको कुरा प्रत्यक्ष स्थल अध्ययनको समयमा वरिपरी पशु गोठमा बसेका मानिसहरूसंग प्रश्न गर्दा जानकारीमा आयो ।

## घटना अध्ययन :प्रथम



रामेछाप चुचुरे १ बस्ने ६५ वर्षीय श्री ओम बहादुर बस्नेत स्थानीय स्कूलमा शिक्षकको काम गर्नु हुन्छ। उहाँ धामी झाँक्री पनि हुनुहुन्छ। उहाँसंग ऐतिहासिक, मौलिक, साँस्कृतिक, धार्मिक मान्यता, विश्वास, चाल चलन र जट्टा, पाँच पोखरीको बारेमा गहिरो अनुभव रहेछ। उहाँलाई स्थानीय बुद्धिजिवीको रूपमा उक्त अध्ययन कार्यक्रममा सहभागी भई दिनको लागि अनुरोध गरिएको थियो। उहाँले जट्टा, पाँच, काल, भाले, भूत, भत्केको पोखरी लगायत खोला खोल्सी र तिनीहरूको सीमाना आदिको रेखाङ्कन बारेमा सहयोग गर्नु भएको थियो।

इतिहासकालमा चुचुरे गा.वि.स.मा किराँतीहरूको ठूलो बसोबास रहेको कुरा त्यस क्षेत्रमा अवस्थित भग्नाबशेषहरूले पुष्टि गर्छ। त्यसैताका देखि रहेको किराँतकालिन देबदेबी, देवता, देवको बोली, शक्तिलाई मान्न, मनाउन उहाँले आफ्नो बारीमा अदुवा, कोदो, आदि जस्ता ऐतिहासिक जैविक अन्नबाली लगाएका रहेछन्।

**श्री ओम बहादुर बस्नेतले यसरी ऐतिहासिक दैवी शक्तिका साथ गाउँघरमा सामाजिक स्वास्थ्य सेवाप्रति निशुल्क योगदान पुऱ्याईरहेको कुरा यसरी व्यक्त गर्नु भयो ।**

**“भाले पोखरीमा दिनको ठीक १२ बजेको समयमा कुखुराको भाले बास्ने गर्दथ्यो । त्यसैले उक्त पोखरीलाई भाले पोखरी नामाकरण गरिएको हो । यो घटना आजभन्दा ५०–६० वर्ष अगाडीको हो । त्यसो त त्यस समयमा भेंडाको साड (थुम्बा) पोखरीबाट निस्की चरनमा रहेका अरू भेडाहरूसँग जुध्ने र बादल लाग्ने गर्दथ्यो भन्ने कुरा बुढापाकाहरूले बताउनु भएको थियो । केही बर्ष अघिसम्म उक्त पोखरीमा पानी हाँस खेल्ने गरेको र मानिस पोखरी नजिक गएमा आफ से आफ पोखरीको पानीमा डुवेर हराउने गरेको थियो तर आजभोली त्यस्तो दृश्य देखिन छाडेको छ । जो कोही वहुला पोखरीमा पुगेपछि त्यसै पोखरीको पानीको सतह हल्लिन थाल्ने, नियालेर राम्ररी पोखरी नजिक गएर हेरेमा ठाउँ ठाउँमा पानी उम्रीन थाल्ने, बादलले गहिरो गरी ढाक्ने गर्दछ । औंसी, पुर्णेको समयमा विभिन्न बाजा, डुम, जङ्गली पशुपंक्षी आदिको आवाज सुनिने गर्दछ । त्यस क्षेत्रमा लामो समयसम्म बसिरहेन उचित नहुने ठानी मानिसहरू प्रायजसो जाने गर्दैन ।”**



लगभग ४,४४३ मी उचाँईमा रहेका भूत, काल अथवा नाग पोखरी श्यामा गा.वि.स. दोलखा जिल्लामा पर्दछ। औतारी लामाले लखेटेको सर्प यसै पोखरीमा बसेको जनमानसमा गहिरो विश्वास रहेको पाईन्छ। यो पोखरी जहिलेपनि बादलले छोपिएको हुन्छ। साधारणतया मानिसहरू यहाँ दर्शनका लागि जादैंनन् किनकि उक्त सर्प मानिसदेखि ज्यादै रिसाएको र पोखरी वरिपरी मानिस, जनावर पुग्नासाथ बादलले छोपिने जन विश्वास समाजमा भएको कुरा ओम बहादुर बस्नेतले भन्नु भयो।

**जुम्लीय पोखरीमा वर्तमान अवस्थामा पानी त्यसरी नभएको र खासै धार्मिक तथा साँस्कृतिक महत्वबारे ज्ञान नभएको भनी श्री ओम बहादुर बस्नेतले जिज्ञासा राख्दै भन्नु भयो ।**

"भत्केको पोखरीमा आजभोली पानी छैन, खाली भग्नाबशेष मात्र छ तर यसले ऐतिहासिक महत्व बोकेको छ । ऐतिहासिक कालमा उक्त पोखरी भयंकर बिशाल थियो रे । उक्त पोखरीमा अति ठूलो सर्प थियो रे । उक्त सर्पले चर्न गएको पशुहरूलाई खाईदिने गर्दथ्यो रे । चुचुरे ठाउँमा एक किराँती जनवा धामी झाँक्री थियो रे त्यसैगरी श्यामा गा.वि.स.मा एक औतारी लामा पनि बस्ने गर्दथ्यो रे । गाउँलेहरूले आफ्नो पशुहरुलाई उक्त पोखरीमा भएको सर्पले सिध्याउन लागेको गुनासो सुनाएपछि किराँत धामी र उक्त औतारी लामा बीच कसले पहिला उक्त सर्पलाई मार्ने भनी बाजी पर्न गएछ । तोकिएको निर्धारित समयानुसार किराँत धामी आफ्नो बलिया सहयोगी (ढोले) हरूसंग उक्त पोखरीको छेउमा गई विहानको मिर्मिरे उज्यालो हुनुभन्दा अगावै पुगेर आफ्नो झाँक्री काम शुरू गरेछ भने उता लामा चाहीं उठेकै थिएनछ । किराँत झाँक्री आफ्नो सबै गर्नु पर्ने कार्य गरेपछि आफ्नो सहयोगिहरूलाई जे जस्तो भवितव्य परेपनि ठाउँ नछाडनु र यी ड्रम बजाउन नछाड्नु, यदि दुध उम्लेर आयो भने म बाँचेर आउँनेछु तर रगत उम्लेर आएमा म मर्नेछु भनी बचन दिएर पोखरी भित्र विहानीको समयमा पसेछन् । एकैछिनमा पोखरीको पानी उम्लन थालेछ र भयंकर ठूलो आवाज आएपछि किराँती झाँक्रीको सहयोगीहरू असाध्यै डरले उक्त ठाउँ छाडी भागेछन् रे र पोखरी भरी रगत भएपछि किराँती झाँक्री भने उक्त पोखरीमा हराएछ । त्यसै समयमा औतारी लामा विहानको खाजा सकेर उडेर त्यस ठाउँमा आई पोखरी भित्र पसेछ । धेरै समयपछि त्यस पोखरीमा दुध जस्तै भएर पोखरीको पानी उम्लिएर आउँदा आउँदै गर्दा पोखरीबाट उक्त सर्प निस्की भाग्न थालेछ । पोखरीबाट लामा निस्केर सर्पलाई मार्न भनी लखट्दै जाँदा सर्प कालपोखरीमा पुगी लोप भएछ । त्यसपछि उक्त पोखरी भत्किएर नष्ट भई खाली भएको भनाई छ । उक्त पोखरी छेउमा मानिसको पाईला अंकित चिन्ह र सर्प आकृतिको शीला अझै हेर्न पाईन्छ ।"

प्रत्यक्ष स्थलगत अध्ययन गर्दा उहाँले बताउनु भए जस्तै अवस्था भेटियो। उक्त पोखरी चट्टाने कैलाश हिमालको काखमा र बलियो चट्टानमा अवस्थित रहेको देखिन्छ। मानव प्रभाव नभएको एकान्त, असजिलो ठाउँ र, सधैं अध्यारो बादल भएकोले डरलाग्दो भएको हुन सक्छ। यस पोखरीको वरिपरी डाँफे, मुनाल, हिमाली खरायो, कस्तुरी मृग र हिउँ चितुवाको बासस्थान हुन सक्ने अनुमान गरिएको छ।

पोखरीको वरिपरी चट्टानले पुरिएको अवस्थामा रहेको अरु पोखरीहरू भेटिएका थिए। हाल पानी भण्डारणका रुपमा रहेका यी पोखरी कस्तुरी मृग जस्ता जनावरहरूलाई पानी पिउनको लागि हुने देखिन्छ। कति ठाउँमा एक अवस्थामा ठूल्ठूला हिम पोखरी रहेको भान हुने क्षेत्रहरू चट्टानले पुरिएर पानी दविएको पनि पाईयो। त्यस्ता पोखरी वरिपरी स्थानीय स्तरमा पाईने हिमाली जडीबुटी, सुन्दर फूलहरु र चराचुरूङ्गीहरूको बासस्थान





पाइयो। माटोले पुरिदैं जाँदा र चौंरी चरनको लागि पानी निकासका कारणले कति पोखरीहरू हराउने अवस्थामा रहेको छ। चौरी चरनको कारण माटोको क्षय हुन गई निर्मल जलभण्डार विनाशन्मुख अवस्थामा रहेको स्थलगत अध्ययनद्वारा थाहा भयो।

## घटना अध्ययन:दोस्रो

दलित समुदायहरूमा जनैपूर्णिमाको दिन जट्टा पोखरीमा गई तीनवटा धागो भएको जनै बदल्ने चलन रहेछ। चन्द्र बहादुर विश्वकर्मा बर्ष ६५ को हुनुहुन्छ। वहाँलाई ऐतिहासिक साक्षीको रूपमा सामुहिक छलफलमा सहभागी भइ दिनको लागि अनुरोध गरिएको थियो।

आफ्नो विवाह पश्चात लामो समयसम्म पनि सन्तानको जन्म नभएपछि उहाँको माताले अव निसन्तान हुने भो भनी नानी सुताउने कोको बुनी लैजानु, जट्टा, पाँच पोखरीको पुजा गर्नु त्यसपछि, कसैले नदेख्ने गरी एक एक वटा ढुङ्गा पोल्टामा राखी पोखरीको परिक्रमा गर्दै जट्टा पोखरी छोरा देउ, सन्तान देउ भनी पुकार्नु, सन्तान भएपछि देखाउन लिएर आउँछु भनी आउनु भनी जानकारी गराउनु भएछ। आमाको आज्ञानुसार उहाँहरूले त्यसै मुताविक कार्यक्रम तय गरी सिद्ध गर्नु भएछ। त्यसै साल उहाँको श्रीमती गर्भिणी भई छोरा पाउन सफल भईछ। दोश्रो बर्ष बहुमूल्य धातु जडान गरी त्रिशुल बनाई विभिन्न पूजाको सामानहरू लिई आफ्ना छोरा जट्टा, पाँच पोखरीलाई देखाउन लगेको भनी चन्द्र बहादुर विश्वकर्मा आफ्नो जीवनमा भई आएको सत्य कुरा बताउनु हुन्छ। त्यसै समयमा पोल्टामा हाली ल्याएको ढुङ्गा पनि पुऱ्याएको भनी उहाँले भन्नु भयो। हालसम्म घरपरिवार राम्रो रहेको र उक्त छोराको कोखबाट पनि राम्रै जैजन्म भएको छ, हुदैं छ भनी चन्द्र बहादुर विश्वकर्मा व्याख्या गर्नु हुन्छ। हिमाली पवित्र पोखरीमा मानव जगतको दु:ख, पीडा मर्का आदि सुनी दिने साक्षात ईश्वर बस्ने भएको हुनाले हरपल मनमा लिईरहनु पर्ने कुरा व्यक्त गर्नु हुन्छ।



## घटना अध्यन: तृतिय

श्रीमती पेमा शेर्पा , हाल ६५ वर्षको हुनुहुन्छ । प्रत्येक वर्ष चौंरी पालकहरु जट्टा पोखरी वरिपरी पुग्ने गर्दारहेछन् र शेर्पाहरूले पोखरीमा चौंरीको दुध मात्र चढाउने सामाजिक मान्यता रहेछ ।

**आफ्नो अनुभव सुनाउँदै पेमा शेर्पा भन्नुहुन्छ-**





"एक बिहानी म आफ्ना महिला साथीहरूसंग जट्टा पोखरीमा दुध चढाउन भनी जाँदा जट्टा पोखरी भरी सर्पहरू एक आपसमा खेली रहेको र पानी दुध झैं भईरहेको दृश्य देखें । डरले सबै जना भागे पनि म चाहीं लुकेर उक्त दृश्य हेरिरहें । एक क्षण हेर्दा पोखरीमा टलक्क, चम्कने भाडा वर्तन देखेपछि मनमा अति डर लिई दुध त्यसै ठाउँमा छाडेर म घर फर्के ।

गोठमा आएर मैले श्रीमानलाई सबै कुरा सुनाए । पोखरी रिसाउनु भयो कि, कसैले फोहरमैला फाल्यो होला अब हामीलाई नराम्रो हुन सक्छ भन्ने सोचेर हामीले नयाँ त्रिशुल बनाउन लगाई पुजा गर्ने सामान लिएर भोलिपल्ट बिहान मेरो श्रीमान साथीहरूसंग पोखरी तर्फ जानु भयो । मलाई चाहीं के भएको होला भनेर साह्रै पिर पर्‍यो । अब के घटना हुने हो कि भनी चिन्तित हुदैं आफ्नो सन्ताहरूलाई त्यस्तो नराम्रो नहोस, पशु, अन्नबाली पनि नराम्रो नहोस भनी सधैं प्रार्थना गरें । तर मेरो परिवार र समाजमा त्यस्तो कुनै नराम्रो घटना भएन । विस्तारै परिवारमा सुधार र उत्पादन पनि राम्रो हुन थाल्यो । छोरा छोरीहरूले पनि हरेक क्षेत्रमा सफलता प्राप्त गरेर आजसम्म राम्रै भएको छ । त्यसरी जट्टा पोखरीले देखाएको दृश्य त राम्रो लक्षण पो रहेछ ।"

## जैविक विविधता र संरक्षण

पवित्र हिमाली काखमा अवस्थित पाँच र जट्टा पोखरीको दक्षिण भेगमा रहेको प्राकृतिक वन जैविक विविधताको दृष्टिकोणले महत्वपूर्ण मानिन्छ । त्यस क्षेत्रमा पाईने जैविक वा प्राकृतिक स्रोतहरूको सूची सामुहिक छलफलद्वारा तयार पारिएको थियो । स्थलगत भ्रमणको समयमा चौंरी पालन कृषकहरूसंग हिउँ चितुवा, रेड पाण्डा, कस्तुरी, मृग, भालु, जडीबुटी, खान हुने जङ्गली च्याउ, फलफूल आदिको बारेमा जिज्ञांसा राखेका थियौं । उहाँहरूले बताए अनुसार हाब्रे (रेडपाण्डा) को शिकार गर्नेहरूले त्यस वन क्षेत्रबाट लगेको देखेको भन्ने कुरा बताउनु भयो । शिकारीहरूले कस्तुरी मार्ने गरेको र पासोमा भालु पर्ने गरेको पनि बताउनु भयो । कहिले काँही हिउँ चितुवाले चौंरीहरूलाई मार्ने गरेको अनुभव उहाँहरूले बताउनु भयो । चोरी पालनकर्ताहरूले त्यस क्षेत्रबाट यार्सागुम्बा, पदमचाल, बुढा ओखती संकलन गर्ने गरेको र चुलाको माथि धुँवामा सुकाउने  चलन रहेछ । त्यसैगरी उक्त वन क्षेत्रमा विभिन्न जङ्गली खान हुने फलफूल, च्याउ, हिमाली फूलहरू, हिमाली खरायो, महत्वपूर्ण चराहरू, उभयचरहरू पाइयो । लोपोन्मुख पवित्र हिमाली पारिस्थितीक प्रणालीमा भएका जैविक विविधता र पाँच र जट्टा पोखरीबाट उत्पन्न भई बगेको निर्मल पानी, साना ठूला खोल्सा खोल्सी हुदैं सम्म फाँट हुदैं भोटेकोशी, तामाकोशी आदिमा













मिसिन आउँछ। त्यस्तो खोलाको किनार माछाहरूको लागि महत्वपूर्ण वासस्थानको रूपमा सहयोग गरिरहेको तथ्य पाइएको छ। ती स्थानीय निर्मल पानीमा पाउने माछा प्रजातीहरू ग्रामीण बासिन्दाहरूलाई पौष्टिक आहारको रूपमा सहयोगी मानिएको छ र उनीहरूले प्रयोग गरी आएको शीप पर्यावरण अनुरूप को प्रविधि रहेको पाइएको छ।



पवित्र हिमाली पाँच र जट्टा पोखरीबाट उत्पन्न निर्मल पानीको सम्बन्ध हुँदै बनेको खोलाको फाँट किनार, जल पारिस्थितीकिय प्रणाली, जलचर र जलपंक्षीहरूको महत्व रहेको कुरा छलफल गर्दा थाहा भएको थियो। मानिसहरूले पाँच र जट्टा पोखरीको दक्षिण भेगमा रहेको वनबाट विभिन्न खान हुने गैर काष्ट वनपैदावार आफ्नो प्रयोजनको लागि लिने गर्दा रहेछन्, जस्तै : खान हुने च्याउ।




विभिन्न प्रकारको हिमाली क्षेत्रमा फुल्ने विरूवाहरू, जट्टा पोखरी वरिपरी रहेको ढुङ्गाको कापमा मौसम अनुसार पाउन सकिन्छ। ती मध्ये केही जडीबुटी धार्मिक महत्वको भएको कुरा स्थलगत अध्ययनमा जानु भएको स्थानीय सहयोगीले बताउनु भएको थियो।



वन ऐन २०४९: संरक्षित सूचीमा, आई.यू.सी.एन. रेड डाटा बुकमा नराखिएको, साईटिश अनुसूची ३ मा समावेश गरिएको रैथाने औषधीको रूपमा प्रयोग हुने, दुर्लभ क्यासरस, हिमालयन पप्पी *(Mecongpsic egia)* र धार्मिक महत्व मानिएका भूतकेश क्रमश पवित्र हिमालयका काखमा रहेको धार्मिक ऐतिहासिक पाँच पोखरी नजिकको क्षेत्रमा स्थलगत अध्ययनको क्रममा पत्ता लगाइएको थियो।



चट्टानयुक्त हिमालको काखमा रहेको जट्टा र पाँच पोखरी वरिपरी घना बनस्पति र वन्यजन्तुको बासस्थान नरहेपनि धार्मिक रूपले पोखरी नजिक क्षेत्रमा शिकार खेल्न नहुने, वनस्पति टिप्न नहुने, काटमार गर्न नहुने, फोहर गर्न नहुने, नराम्रो विचारले हेर्न नहुने र त्यसो कसैले गरेमा पोखरी रिसाउने विश्वास छ। पोखरीसंग सम्बन्ध भएको ऐतिहासिक किराँतकालिन दैबी शक्ति र परम्पराले जैविक विविधता संरक्षणमा महत्वपूर्ण भूमिका निर्वाह गरिरहेको तथ्य प्रष्ट हुन आउँछ। जनजातिय रुपमा चलिआएका प्रचलनहरु हाम्रा सिमसार क्षेत्रहरुको सर्म्बधन र प्रर्बधनका आधारशिला हुन् र यही अनुपम सामुदायिक विश्वास र प्रयासले नै दिर्घकालिन संरक्षण सुनिश्चित गर्न सक्छ।




① WATER OUTLET

② SISTER POND INSIDE OF THE MAIN LAKE

③ ISLAND

④ GOD "SIVA" WAS MEDITATION

5- POKHARI- CHHOCHHORE -1, RAMECHHAP




N

① MAIN WORSHIPING AREA

② WATER FROM 5- POKHARI

③ JATA POKHARI

④ WATER OUTLET

⑤ BATHING PLACE

⑥

⑦ WARSHIPING STONE




SACRED JATA POKHARI, CHHOCHHORE-1, RAMECHHAP


CULTURE AND RELIGIOUS SIGNIFICANCE MAPPING.
N
8/10 Hrs
12 Hrs
14 Hrs
11/12 Hrs
2 Hrs
1 Hrs
3-DAY
BRAMIN CHHETRI / HINDU
SHERPA - BUDDHIST
TAMANG BUDDHIST
DALIT B.K./NEPALI - HINDU
① BADRI BASH ② SINDOLI GADI ③ MANTHALI
④ BETALI ⑤ THOSE ⑥ SIBALAYA ⑦ MALI ⑧ KAYAME
⑨ JIRI ⑩ KATHMANDU ⑪ DARJEELING (INDIA) ⑫ BIGO
⑬ KATI ⑭ CHHANKHO ⑮ PATHIVARA ⑯ YALE ⑰ PATHIVARA HIMAL
⑱ PATCH POKHARI ⑲ WATER FALL ⑳ JATA POKHORI
㉑ KALODUNGA ㉒ SEREM CHOK ㉓ MANEDADA ㉔ CHHUCHHURE-1
㉕ THODUNG GUMBA ㉖ DEURALI ㉗ BAMTE BHANDAR ㉘ GUNDEL
㉙ KINJA ㉚ SOLU ㉛ NAMCHEI ㉜ LAMOJORA ㉝ BHALE POKHARI
㉞ GAURIDOVAN ㉟ KALPOKHARI
(3)


SACRED WETLANDS OF RAMECHAP, CHOCHORE-1
RESOURCE MAP
N
DOLKHA
KHEMTI KHOLA
ANCIENT KIRAT PLACE
(47)
(1) GIRI
(2) KUTHAM
(3) DOVAN
(4) SIVALAYA
(5) CHOCHORE KHOLA
(6) MEHELE KHOLA
(7) CHAKE KHOLA
(8) GARJANG KHOLA
(9) GARJANG
(10) CHOORI KHOLA
(11) DEGHONSA GOUN
(12) KHARE GOUN
(13) CHAITE
(14) DOVAN
(15) TAPTIPE
(16) THADE DHUNGA
(17) PANIPAKHA (पानी पाखा)
(18) PHOKTE
(19) JHAYALSA
(20) MANE DADA (माने डांडा)
(21) GHOWANG KHOLA
(22) STONE CAVE
(23) TERSE
(24) BLACT STONE
(25) WAY TO CHANKHO
(26) DAMAGED POND
(27) BATHING AREA
(28) JATA POKHARI
(29) WORSHIPING PLACE
(30) WATER FROM PANCH POKHARI
(31) PANCH POKHARI
(32) WORSHIPING PLACE
(33) BHAGAWATI THAN
(34) WAY OF WATER
(35) DUDTH POKHARI
(36) WATER FALL
(37) BAULAHA POKHARI
(38) BHALE POKHARI
(39) JUMLIYA POKHARI
(40) SIRAN CHOCK
(41) DAMAGED POKHARI
(42) SIRAN KATERI
(43) DHUNGA MATHI
(44) BHAISI KHARKA
(45) CHEGHUNSA
(46) PIDALO BARI
(47) ANCIENT KIRAT HISTORICAL PLACE

WWF Nepal acknowledges with gratitude the support received for the Freshwater Program from all our partners, donors and supporters:
Government of Nepal; Ministry of Forests and Soil Conservation (MFSC); Department of National Parks and Wildlife Conservation (DNPWC); Department of Forests (DoF); Department of Plant Resources; Water and Energy Commission Secretariat (WECS); WWF International; WWF UK; WWF US; WWF Netherlands; WWF Finland; WWF Sweden; Swedish International Development Cooperation Agency (SIDA); International Water Management Institute (IWMI); and Community Based Organizations



२०२९ सालमा नेपालले राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण ऐनको निर्माण गरेर वन्यजन्तु संरक्षणको आधुनिक युगमा प्रवेश गरेको थियो। राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभागको ९ वटा राष्ट्रिय निकुन्ज, ३ वटा वन्यजन्तु आरक्ष, ३ वटा संरक्षण क्षेत्र र १ वटा शिकार आरक्ष लगायत ९ वटा मध्यवर्ती क्षेत्रको सञ्जाल रहेको छ। यी सबै गरेर नेपालको कूल भू-भागको १९.४ प्रतिशत अर्थात २८,५८५.६७ वर्ग कि.मि. क्षेत्रफल ओगटेको छ।

राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभागको प्रमुख उद्देश्यहरुमा नेपालका बहुमूल्य तथा विभिन्न वन्यजन्तु तथा वनस्पति तथा भू-दृश्यको संरक्षण, सुरक्षा एवं पुर्नोत्थान गर्नु रहेको छ।

सन् १९८७ मा नेपाल रामसार महासन्धीको सदस्य राष्ट्र भएको थियो। राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभाग यस महासन्धीको नेपाल कार्यान्वयन गर्ने प्रमुख निकायको रुपमा रहेको छ।

जैविक विनिधताको संरक्षणका निम्ति सन् १९६१ म स्थापना गरि एको डब्लु डब्लु एफ एक अन्तर्राष्ट्रिय गैरसरकारी संस्था हो। स्वीट्जरल्यान्डको ग्लँमा केन्द्रिय कार्यालय रहेको यो संस्था ९० भन्दा बढी राष्ट्रहरुमा क्रियाशील छ। डब्लु डब्लु एफ एक स्वतन्त्र, गैरसरकारी, गैरराजनितिक, गैरधार्मिक र नाफारहित संस्था हो।

डब्लु डब्लु एफले विश्वको प्राकृतिक वातावरणलाई निम्नीकृत हुनबाट जोगाई तल उल्लिखित कार्यहरूमार्फत मानिस र प्रकृतिबीच सामञ्जस्य रहने भविष्यको निर्माण गर्ने ध्येय राख्दछ :

- विश्वको प्राकृतिक विविधता जगेर्ना गरेर,
- पुनः प्रयोजनमा आउने प्राकृतिक स्रोतको दिगोपनलाई सुनिश्चित गरेर,
- प्रदूषण र अपव्ययी उपभोग न्यून गरेर।




**राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग**
पो.ब.नं. ८६०, बबरमहल, काठमाडौं, नेपाल
फोन: ९७७-१-४२२०८५०, ४२२०९१२, ४२२७९२६
फ्याक्स: ९७७-१-४२२६६७५
ई-मेल: dnpwc@bdcin.wlink.com.np
वेबसाइट: www.dnpwc.gov.np






**डब्लु डब्लु एफ नेपाल**
**स्वच्छ जलसम्पदा कार्यक्रम**
पो.ब.नं. ७६६०, बालुवाटार, काठमाडौं, नेपाल
फोन: ९७७-१-४४३४८२०, ४४३४९७०, ४४१०९४२
फ्याक्स: ९७७-१-४४३८४५८
ई-मेल: info@wwfnepal.org
वेबसाइट: www.wwfnepal.org
www.panda.org/freshwater